# विषय सूची

## अध्यन गर्नु भन्दा अगाडी केही प्रश्नहरू

१) यो एक मात्र संदेशको लक्ष्य के हो त ?
२) पवित्र किताबले यो संदेशको बारेमा के भन्छ ?
३) कुर्आनले यो संदेशका बारेमा के भन्छ ?
४) यस पछि यो संदेशको बारेमा तपाइँको के बिचार छ ?

## मूख्य विषय बस्तुतिर :

आदम् अलैहिस्सलामको सृष्टि भए देखि मानव इतिहासमा एउटै संदेश मानव जातिको लागि पठाइएको छ । मानिसहरूलाई स्मरण गराउन र उनीहरूलाई सोझो बाटोमा फर्काउनका लागि अल्लाह तआला (जो सत्य र विद्मान छन्)ले आफ्ना संदेष्टा र दूतहरू जस्तै : नूह, ईब्राहीम, मूसा, ईसा र मुहम्मद (उनीहरूमाथि अल्लाहको चीर शान्ति होस्)लाई यही एक मात्र संदेश पुऱ्याउनको लागि पठाए ।

**सत्य उपास्य एक मात्र**
**छन् तसर्थ उनकै उपासना गर**

## एक मात्र सत्य उपास्य (सृष्टिकर्ता)

| पठायो | यो संदेश पुऱ्याउन |
|---|---|
| आदम | अल्लाह एक मात्र छन् |
| नूह | अल्लाह एक मात्र छन् |
| ईब्राहीम | अल्लाह एक मात्र छन् |
| मूसा | अल्लाह एक मात्र छन् |
| ईसा | अल्लाह एक मात्र छन् |
| मुहम्मद | अल्लाह एक मात्र छन् |

अल्लाह ताआलाले सर्व साहसी संदेष्टाहरू लगायत अरु धेरै जसो संदेष्टाहरू, जसमध्य केहीको बारेमा हामी जान्दछौं र केहीलाई जान्दैनौं, यी महान कार्यहरूका लागि पठाइएका हुन् ।

१) अल्लाह कहाँ बाट वही (इश वाणी) प्राप्त गरेर आफ्नो समाज र अनुयायीहरूसम्म पुऱ्याउनु ।

२) मानिसहरूलाई एक अल्लाहमाथि विश्वास राख्न र उनैको लागि आफ्नो भक्ति स्वच्छ गर्ने शिक्षा दिनु ।

३) आफ्नो काम कर्तव्य र वाणी विचारको एउटा नमूना पेश गर्नु ताकि उनका अनुयायीहरू उनीहरूको बाटो अपनाई अल्लाहसम्म पुग्न सकून् ।

४) आफ्ना अनुयायीहरूलाई अल्लाहको भय, उनको भक्ति र उनका आदेशहरूको पाल्ना गराउने बाटो देखाउनु ।

५) आफ्ना अनुयायीहरूलाई इसलामको आदेश र उत्तम चरित्रको शिक्षा दिनु।

६) अवज्ञाकारीहरू र मूर्ती पूज्ने बहुदेववादी तथा अरु व्यक्तिहरूलाई सोझोबाटो देखाउनु।

७) मृत्यूपछि फेरि जिवित गरिने छन्, महाप्रलयको दिन उनीहरूले गरेका कृया कलापको हिसाब किताब हुने छ, त जसले ईमान ल्यायो र राम्रा कार्य गऱ्यो उ जन्नत (स्वर्ग)मा जाने छ र जसले अल्लाहको साथमा अरु कसैलाई साझीदार बनायो र उनको अवज्ञा गऱ्यो उसको बास जहन्नम (नर्क) हुने छ, भन्ने कुराको सूचना दिनु।

एक उपास्यले नै यी सवै संदेष्टा र दूतहरूलाई सृष्टि गरेर पठाएका हुन्। ब्रह्माण्ड र यसमा सृजना गरिएका प्रत्येक बस्तु अल्लाह सृष्टिकर्ताको बारेमा भनिरहेक छन् र उनका एकापत्यको बारेमा गवाही दिराखेका छन् । तसर्थ अल्लाहले नै ब्रह्माण्ड र त्यसमा

रहेका मानिस, जिव जन्तु तथा कीरा फटेंग्रालाई सृष्टि गरेका हुन् र उनी नै जीवन मरण तथा सदैव जीवनका सृष्टिकर्ता हुन् ।

यहूदी, ईसाई र मुसलमान कहाँ रहेका सवै आकाशीय धर्महरूले अल्लाह विद्यान हुनु र एक मात्र हुनुको गवाही दिराखेका छन् ।

सत्यताको खोज गर्ने व्यक्तिले जब ईलाह (उपास्य)को मतलबलाई विषय वस्तुको रूपमा स्वच्छताको साथ बाईबिल र कुर्आनको अध्य्यन गर्दछ त्यस बेला उसले अल्लाहको अनौठो विशेषताहरू, जो उनी संग खास छन्, त्यसमा फरक गर्न सक्छ र ती बिशेषताहरूमा कुनै उपास्यलाई साभी गर्दैन । यी केही विशेषताहरू तल दिइएका छन् ः

१) सत्य उपास्य सृष्टिकर्ता हुन् सिर्जना होइनन् ।

२) सत्य उपास्य एक मात्र छन् उनका कोही पनि साझीदार छैनन्, विभिन्न प्रकारका पनि छैनन्, ऊनी न त कसैका बुवा हुन ननै कसैका छोरा ।

३) सिर्जित बस्तुहरूका सोचाइबाट पवित्र छन्, कुनै आँखाले उनलाई यस संसारमा हेर्न सक्तैन ।

४) अल्लाह सधैंदेखि रहेका छन् काल लाग्ने छैन, चोला पनि फेर्दैनन्, कसैमा रूपान्तर पनि गर्दैनन् र आफूले सृष्टि गरेका कुनै पनि वस्तुको रूप धारण गर्दैनन् ।

५) अल्लाह अफैंमा परिपक्व छन् र आफैंमा उभिएका छन् र आफूले सृष्टि गरेका वस्तुहरूबाट निर्लोभी छन्, तिनीहरूको सहयोगको आवश्यक्ता पर्दैन, त्यसैले न त उनका कोही पिता छन् न नै आमा, न नै स्वास्नी, न नै सन्तान, खान–पीनको आवश्यक्ता पर्दैन, कसैको सहायता पनि

चाहिंदैन तर उनले सृष्टि गरेका बस्तुहरूलाई उनको आवश्यक्ता छ ।

६) अल्लाह आफ्ना प्रभूत्व, समपन्नता र सौन्दर्यतामा एकलो छन् । यी कुराहरूमा उनका कोही पनि साभ्मीदार छैन र उनी जस्ता कोही पनि छैनन् ।

माथि देहाएका यी मापदण्ड र गुणहरू (अरु गुणहरू जसमा अल्लाह एकलो छन्)को आधारमा ठानिएका कुनै पनि देवी देवतालाई मान्न वा रद्द गर्न सकिन्छ ।

प्रश्न गर्ने केही ईसाईहरू यस कुराबाट अचंभित पनि होलान् । प्रष्ट छ कि अल्लाह एक मात्र छन् र हामी एक उपास्य माथि आस्थावान छौं अनि समस्या के हो त ?

मलाई त्यही एउटै संदेश, जुन माथि वर्णन गरिएको छ, तिर फेरि फर्कन दिनु होस ताकि तपाँईलाई पवित्र किताब र कुर्आन बाट केही श्लोकहरू छानेर पेश गरुँ जसले अल्लाहको

एकत्वलाई साबित गर्नेछन् तर यो भन्दा अगाडी तपाइँ संग यस कुरामासहभागी हुन चाहन्छु :

प्रश्न गर्ने केही ईसाईहरू यस
कुरा बाट अचंभित पनि
होलान् । प्रष्ट छ कि अल्लाह
एक मात्र छन् र हामी एक
उपास्य माथि आस्थावान छौं
अनि समस्या के हो त ?

प्रश्न गर्ने केही ईसाईहरू यस कुरा बाट अचंभित पनि होलान् । प्रष्ट छ कि अल्लाह एक मात्र छन् र हामी एक उपास्य माथि आस्थावान छौं अनि समस्या के हो त ?

तर सत्य कुरा जो मैले आफ्नो अध्ययनको र समग्र पढाइको दौरानमा ईसाई धर्मको बारेमा

पढें र धेरै जसो ईसाईहरू संगको कुराकानीबाट पाएँ कि उनीहरू कहाँ अल्लाह (उनीहरूका केही मानिसहरूका विचार अनुसार) यस प्रकार छन् ।

१) अल्लाह पिता

२) अल्लाह छोरा

३) अल्लाह पवित्र आत्मा (रूहुल कुद्स)

यथार्त ज्ञान र साधारण तर्कले विषय वस्तुको अध्यनकर्तालाई ईसाईहरूका यी समस्याहरूतिर ध्यान आकर्षण गर्दछ ।

● तपाइँहरूको भनाइ छ कि अल्लाह एक मात्र छन् जब कि तपाइँहरू तीन वटा उपास्यको कुरा गर्नुहुन्छ ?

● के एक अल्लाह तीन वटा उपास्यहरूमा प्रकट भएका छन् वा तीनै वटा एक अल्लाहमा रूपान्तर भएका छन् । (१ ३मा वा ३ १मा)

यसका साथ साथै ईसाईहरूका केही धारणा अनुसार यी तीनै वटा उपास्यरूका अधिकार, कामकाज तथा आकार विभिन्न प्रकारका छन् ।

१) अल्लाह पिता = सृष्टिकर्ता
२) अल्लाह छोरा = उद्दार गराउने
३) अल्लाह पवित्र आत्मा = सल्लाहकार

उनीहरूको सोचाई अनुसार ईसा अलैहिस्सलाम नै अल्लाहका छोरा हुन् वा उपास्य वा उपास्यका केही अंश, यो कुरा तौरात र इंजील र तौरातमा रहेका श्लोकहरूको पटक्कै विपरित छ, जब कि तौरातमा भनिएको छ, अल्लाहलाई न त कसैले हेर्न सक्छ न नै उनको आवाज सुन्न सक्छ ।
“तिमीहरूले न त कहिले उनका स्वर सुन्यौ न नै उनका अनुहार हेऱ्यौ ।” (जोहन ५: ३७)
“उनलाई कसैले कहिले देखेन न नै कसैले उनलाई हेर्न सक्दछ ।” (१ टामोथी ६: १६)

“मलाई कोही पनि जिवित रहेको अवस्थामा हेर्न सक्तैन।” (इक्सोडस् ३३ः २०)

यी उद्धृत वाक्य र यस वाहेक अरु श्लोकहरूको आधारमा आश्चर्य मान्दै पूर्ण सत्यता र इमान्दारीको साथ उनीहरूलाई सोध्न चाहन्छु, हामीहरू कसरी पवित्र किताबका उद्धृत वाक्यहरू जसले साबित गर्दछ कि कोही पनि छैन जसले अल्लाहलाई देखेको छ, र उनीहरूको भनाइमा ईसा नै अल्लाह हुन्, तालमेल गराउन सक्छौं।

● के त्यस बेलाका यहूदी र उनका परिवारहरूले ईसा अ० र उनका अनुयायीहरूलाई हेरेनन्?, के उनीहरूले ईसा मसीहलाई देखेनन्? (जसरी उनीहरूका केही व्यक्तिहरू आस्था राख्दछन् कि अल्लाह छोरा हुन्) र उनका स्वर सुनेनन्?

● तौरात र इंजीलले कसरी साबित गऱ्यो कि अल्लाहलाई कसैले पनि हेरेन र कसैले

उनको स्वर सुनेन । फेरि हेर्छौं कि ईसा अ०लाई उनीहरूले व्यक्तिगत रूपमा हेरे, उनका कुराहरू सुने, त्यो अल्लाह हो वा अल्लाहको छोरा? के यहाँ केही अत्यन्तै गोप्नीय कुरा त छैन जसले अल्लाहको अस्तित्व संग संबन्ध राख्दछ?

अल्लाहको भनाइलाई वर्णन गर्दै तौरात यसको विपरित साबित गर्दै भन्छ : "म नै उपास्य हुँ, म बाहेक अरु अर्को कुनै उपास्य छैन, म कसै संग गोप्य कुरा गर्दिनँ, आफ्नो लक्ष्यलाई गोप्य राखदिन, म नै अल्लाह हुँ र म सत्य नै भन्छु, जुन कुराहरू सत्य छन् ती कुराहरूको बारेमा नै सावधान गराउँछु ।" ( इशयीया ४५: १९)

अनि सत्यता के हो त?
कृप्या अधिका श्लोकहरूलाई बारम्बार पढ्नु होस् र अलि पर्खेर हेर्नु होस् ।

## एक मात्र संदेश !

अब हामी सबै एक जूट भएर सत्यको खोजीमा लागौं जो पवित्र किताब कुर्आनमा छ, यो आशाको साथ कि तपाइँहरू यस सानो किताबलाई चिन्तन मनन् गरेर माथिका श्लोक तथा उद्धृतहरूलाई आलोच्नात्मक र नियायपूर्वक विषय बस्तुको रूपमा अध्यन गरेर आफ्नो दृष्टिकोण मलाई पनि बताउनु होला ।

विषय बस्तुको परिपेक्षमा म केही तर्कहरू बिना
कुनै टिक्का टिप्पणी पेश गरिराखेकोछु,
तिनीहरूलाई ध्यान पूर्वक तथा विना कुनै पुर्वाग्रह,
विषय बस्तुको रूपमा अध्यन गर्नुहोस् ।

## एक मात्र सत्य अल्लाह, पवित्र किताबमा : (प्राचीन ईच्छापत्र)

➢ हे ईसराइल ! सृष्टिकर्ता हाम्रा उपास्य हुन् उनी एक मात्र छन् । (ड्युट्रनोमी ६: ४)

➢ के एक अल्लाहले हाम्रो लागि चेतनामूलक जिवनको सृष्टि गरेका छैनन् र हाम्रो पालन पोशन गरिराखेका छैनन् ? (मलाखी २:१५)

➢ तसर्थ तिमीहरू बुझ र म माथि आस्थावान होउ, जानिराख कि म नै अल्लाह हुँ । म भन्दा अघि कोही पनि पुजनीय थिएन र म पछि पनि कोही उपास्य हुने छैन । म नै सृष्टिकर्ता हुँ, म बाहेक मौक्ष दिने वाला अरु कोही पनि छैन । (ईशईया ४३: १०–११)

➢ म नै पहिला हुँ र अन्तिम पनि, म बाहेक म जस्तो कोही पनि उपास्य छैन ।
(शयीया ४४: ६)

➢ के म नै सृष्टिकर्ता हुइनँ? र म बाहेक कोही उपास्य छ र? र दया गर्ने, स्वच्छ हृदय भएको कोही छैन । (ईशईया ४५: २१)

के तपाइँ यस्तै अरु उद्‌धृत् श्लोकहरू स्मरण गर्न सक्नु हुन्छ ।

## एक मात्र सत्य अल्लाह, पवित्र किताबमा : (नयाँ ईच्छापत्र)

- सदा सर्वदाको जीवन त यो हो कि उनीहरूले तिमीलाई एक मात्र सत्य उपास्य जानून् र ईसा मसीह, जसलाई तिमीले पठाएका हौ । (जोहन १७: ३)

- अल्लाहको भक्ति गर जो तिम्रो उपास्य हो र मात्र उनको सेवा गर । (मत्ता ४: १०)

- हे इसराइल सुनिराख ! सृष्टिकर्ता हाम्रा उपास्य हुन् उनी एक मात्र छन् । ........ तसर्थ अल्लाह एक मात्र छन् उनी बाहेक अरु कोही पनि छैन । (मार्क १२: २८–३३)

- अल्लाह त एक मात्र छन् र मानिस र अल्लाहको बीच मध्यस्ता गर्ने एक मात्र छन् त्यो इसा मसीह हुन्। (१ टीमोथी २: ५)

- उनी कहाँ एक जना आए र उहाँलाई संबोधन गरे : हे भक्त ! कुन यस्ता स्वच्छ कार्यहरू छन् जसलाई गरेर म सदैवको जिवन प्राप्त गर्न सक्छु ? वहाँ ( ईसा अ०)ले भन्नुभयो : किन तिमीले मलाई भक्त भन्यौ ? यहाँ एक जना बाहेक अरु कोही स्वच्छ छैन, उनी नै अल्लाह हुन्। (मत्ता १९: १६–१७)

के तपाई यस्तै अरु उद्धृत् श्लोकहरू स्मरण गर्न सक्नु हुन्छ
जसले साबित गरोस कि अल्लाह एक मात्र छन्।
(तीन वटा छैनन)

## एक मात्र सत्य अल्लाह, कुर्आन मजीदमा :

➢ "भनिदेउ अल्लाह एक मात्र छन्, अल्लाह आफूमा निहित छन्, उनका आमा बुवा छैनन्, उनका कोही सन्तान पनि छैनन् र उनी जस्ता कोही पनि छैनन् ।" (सूरह ११२ श्लोक १-४)

➢ "हे कैदीहरू ! के धेरै किसिमका उपास्यहरू उपयुक्त छन् वा एक बलवान अल्लाह ।"
(सूरह १२ श्लोक ३९)

➢ "तिम्रा सृष्टिकर्ता एक मात्र छन् ।"
(सूरह ३७ श्लोक ४)

➢ "के अल्लाहका साथमा अरु उपास्यहरू छन्, त भनिदेऊ : तिमीहरू त्यसको लागि सबूत लिएर आऊ यदि तिमीहरू आफ्नो भनाइमा सत्य छौ ?" (सूरह १२ श्लोक ६४)

➢ "तिनीहरूले अवज्ञा गरे जसले यो भने कि अल्लाह तीनका तेस्रो हुन् । एक उपास्य बाहेक अरु कुनै पनि उपास्य छैन । यदि उनीहरू आफ्नो यस भनाइबाट रुकेनन् त उनीहरूलाई कष्टकर सजायँ आइ लाग्नेछ । उनीहरू किन अल्लाह तर्फ फर्कि राखेका छैनन् र अल्लाहसंग आफ्नो पापको लागि क्षमायाचना गरिराखेका छैनन्, अल्लाह त अत्यन्तै क्षमाशील तथा करुणामय छन् ।"
(सूरह ५ श्लोक ७३-७४)

वास्तवमा यो संदेश
(अल्लाहलाई एक मान्नु)
नै कुर्आनको मूल विषय हो ।

## अन्तमा

पवित्र किताब र कुर्आनमा यस प्रकारका कतिपया श्लोक र तर्कहरू छन्, जसमा कुनै संदेह छैन, जसले साबित गर्दछन् कि अल्लाह एक मात्र छन् उनी बाहेक अरु कोही उपास्य छैनन् । जस्तो कि पवित्र किताबले भनि सकेको छ : “हे ईसराईल सुन ! हाम्रो उपास्य सृष्टिकर्ता एक मात्र छन् । ........ अल्लाह त एक मात्र छन् उनी बाहेक अरु कोही पनि छैनन् ।” (मार्क १२ श्लोक २७-३३) र कुर्आनले अल्लाहको हुकुमलाई यस प्रकारले ब्यान गर्दछ : (हे मुहम्मद) भनिदेउ ! अल्लाह एक मात्र छन् । (सूरह ११२ श्लोक १)
पवित्र किताबले यो कुराको पुष्टि मात्र गर्दैन कि अल्लाह एक मात्र छन् बरु यस कुराको पनि पुष्टि गर्दछ कि अल्लाह नै एक मात्र सृष्टिकर्ता र मौक्ष दिनेवाला हुन् ।

"तसर्थ तिमीहरू बुझ र म माथि आस्थावान होउ, जानिराख कि म नै अल्लाह हुँ। म भन्दा अघि कोही पनि पूजनीय थिएन र म पछि पनि कोही उपास्य हुने छैन। म नै सृष्टिकर्ता हुँ, म बाहेक मौक्ष दिने वाला अरु कोही पनि छैन।"
(ईशईया ४३ः १०-११)

यस बाट स्पष्ट हुन्छ कि ईसाईहरूको, ईसा अ०, पवित्र आत्मा र यी दुई बाहेक (ब्रह्मा, विष्णु, शिव, कृष्ण र बुद्ध) पनि उपास्य छन् भन्ने कुराको पछाडि कुनै तर्क छैन । उनीहरू त अल्लाहले सृष्टि गरेका वस्तु मध्यका एउटा सिर्जना हुन्, अल्लाहको यस ब्रह्माण्डमा उनीहरूका केही अमल दखल छैन । न त उनीहरू उपास्य हुन् न नै उपास्यका झिल्को, जिउ र अकार हुन्। पवित्र किताब र कुर्आनको बयान बमोजिम उनी जस्ता कोही पनि छैनन्। अल्लाह ताआला, यहूदीहरू पथ भ्रष्ट र अल्लाह बाहेक उपास्य ठहराएकोमा उनीहरूमाथि क्रोधित भएका थिए । "सृष्टिकर्ताको क्रोधको आगो

उनीहरू माथि दन्कियो ।"(संख्या २५ः ३) र मूसा अ०ले उनीहरूले बनाएका सुनौलो बाछालाई टुक्रा टुक्रा पारिदिए ।
अर्को तिर एकेश्वरवादीहरूले सजायँ र कष्टलाई स्वीकार गरे किन भने उनीहरू एक अल्लाह भन्ने कुरामाथि आस्थावान भए र इसा अ०को (एक ईश्वरवादी) शिक्षाहरूमा भएको फेर बदललाई अस्वीकार गरे र तीन ईश्वर हुनुको नयाँ चलनलाई नकारे, (जुन पूलिस् र उसका अनुयायीहरूको समयमा जाहेर भएका थिए ।)
संक्षिप्तमा यो भनौं कि अल्लाहले आदम, नूह, इब्राहीम, मूसा, ईसा र मुहम्मद स० र उनीहरू बाहेक सबै संदेष्टा र दूतहरू (उनीहरूमाथि अल्लाहको दया र शान्ति होस)लाई, मानिसहरूका लागि एक अल्लाहमा आस्थावान हुनु, आफ्नो भक्तिलाई उनकै लागि खास गर्नु, उनका साथमा कसैलाई साझी नगर्नु र कसैलाई उनको प्रतिद्वन्दी नठहराउनु भन्ने

कुराको आह्वानको लागि पठाए। तसर्थ यही नै उनीहरूको एक मात्र संदेश हो।

**सत्य उपास्य एक मात्र छन् त्यसैले तपाइँहरू उनी एक मात्र उपास्यको पूजा अर्चना गर्नु होस।**

जसरी संदेष्टा र दूतहरूका संदेश एक मात्र छ त्यस्तै उनीहरूका धर्म पनि एक मात्र छ। अनि बताउनुहोस कि उनीहरूको धर्म के हो त?

उनीहरूको संदेशको यथार्थ एक अल्लाहको सामु समर्पित हुनु हो र अरबी भाषाले यसैको परिभाषा इसलाम शब्दले गर्दछ।

कुर्आनले साबित गरेको छ कि इसलाम नै सवै संदेष्टा र दूतहरूका लागि सत्य धर्म रहेको छ र कुर्आनको यस

वास्तविक्तालाई नियाल्दै जाँदा पवित्र किताबमा पनि यसै सत्यतालाई हेर्न सकिन्छ ।

यस वास्तिविक्तालाई म आफ्नो आउने अर्को किताबमा पनि अपनाउने छु ।
( अल्लाहले चाहेमा)

अन्तमा म भन्न चाहन्छु कि मोक्ष प्राप्तीको लागि सत्यता र स्वच्छ्ताको साथ यसै संदेशलाई अंगालौं र यसै माथि आस्थावान बनौं तर यती गरे मात्र हुँदैन बरु हामीले सवै संदेष्टा र दूतहरूका साथै मुहम्मद स० माथि पनि आस्थावान हुनुपर्छ र उनीहरूले हिंडेको बाटो अपनाउनुपर्छ र उनीहरूले गरेका काम कर्तब्यलाई कार्यानव्यन गर्नुपर्छ । यही नै सदाको जिवनको लागि सुखमय बाटो हो ।

त हे मानव हो ! जो निसपक्ष रूपमा वास्तविक्ताको खोजीमा छ र मोक्ष चाहन्छ, त तपाई यस कुरा माथि अवश्य विचार गर्नुहोस्, समय समाप्ति र मृत्यू भन्दा अगावै, जो अचानक आउने छ । त कसलाई थाहा छ कि त्यो कहिले आउला ?

यस्तो अत्यन्तै र आवश्यक तथा निर्णायक कुरामाथि चिन्तन र पुनराबृत्ति गर्दा, सम्झने बुद्धि र स्वच्छ आत्माका साथ तपाई यस कुराको पुष्टि गर्न सक्नुहुन्छ कि अल्लाह एक मात्र छन्, उनका कोही साझीदार छैनन्, उनका कोही सन्तान छैनन्, उनैको माथि आस्थावान हुनु, उनकै भक्ति गर्नु र यस कुरा माथि आस्था राख्नु कि मुहम्मद स० अल्लाहका दूत हुन् जसरी कि नूह, ईब्राहीम, मूसा र ईसा अ० हुन् ।

☒ यति बेला यदि संभव छ भने तपाई यी शब्दहरू भन्न सक्नु हुन्छ ।

"अश्हदु अल्ला इलाह इल्लल्लाहु व अश्हदु अन्न मुहम्मदर्रसूलुल्लाह ।"

म गवाही दिन्छु कि अल्लाह वाहेक अरु कोही उपास्य छैन र मुहम्मद अल्लाहका दूत हुन् ।

सदा सर्वदाको रमणीय जीवनको कार्यानव्यनको लागि यो सब भन्दा पहिलो खुड्किलो हो र यही नै वास्तवमा जन्नत (स्वर्ग)का ढोकाहरूको उचित साँचो हो ।

यदि तपाईले यो बाटो अपनाउन खोज्नु भएको छ भने संभवतः आफ्ना इष्ट मित्र, मुस्लिम छिमेकि, नजिकको मस्जिद वा कुनै इस्लमी संध संस्था अथवा मलाई फोन गर्नु वा चिठी लेख्नु होला ।

“(हे मुहम्मद) भनि देऊ ! हे मेरा भक्तहरू हो, जसले आफूमाथि अत्याचार गरेको छ, अल्लाहको महिमाबाट निराश नहोऊ, अल्लाहले सवै पापलाई माफ गरि दिन्छन्, उनी धेरै नै माफ गर्ने र सदैव दयावान छन् । आफ्नो सृष्टिकर्ताको तर्फ फर्क र आफूलाई अल्लाहको अगाडि उनको प्रकोप आउनु भन्दा अगावै समर्पित गरि देऊ, अन्यथा प्रकोप पछि तिम्रो सहायता हुने वाला छैन । र तिम्रो सृष्टिकर्ताको तर्फबाट जुन राम्रा कुराहरू अवतरण भएका छन् त्यसलाई अचानक आउने प्रकोप, जसको आभास पनि तिमीलाई हुँदैन, को अगावै अनुसरण गर ।” (सूरह ३९ श्लोक ५३–५४)

यहाँ अर्को कुरा पनि छ ......

## अन्तिम चाहना

एक मात्र संदेशलाई ध्यानपूर्वक समझेर पढ्दा सत्यको खोजीगर्नेहरूले यस्ता प्रकारका प्रश्नहरू गर्लान् :

- सत्यता के हो त ?
- त्रुटी कहाँ छ त ?
- समाधान के हो त ?

यी र यस्ता प्रकारका प्रश्नहरूको बारेमा म आफ्नो अर्को लेखहरूमा छिनो फानो गर्ने छु।
लेखकका किताब र अन्य कार्यहरू
प्रथमः क्रमशः सत्यको खोजीमा

(धर्महरूबीच तुल्नात्मक खोज कार्य र इस्लामको उदारतालाई दर्शाउने)

१) उनी को हुन् ?

२) उपास्य, ईसाई धर्ममा र उनको प्रकृति के हो ?

३) एक मात्र संदेश ?

४) गलती के हो त ?

५) इस्लामका सौन्दर्यता

६) इस्लमाका क ख ग

७) यस पछि के हुने हो ?

दोस्रोः आउने किताबहरू

- ❖ सदैव सुखमय जीवनको साँचो
- ❖ जानेतलाई एउटा संदेश
- ❖ "हामी" किन ?

तेस्रोः अन्य कार्यहरू

- साप्ताहिक टी. भी. कार्यक्रम
- दुरदर्शन र संचारका प्रसङ्गहरू
- इस्लामको बारेमा आम भाषण्

कुनै थप जानकारी, प्रश्न र सुझावको
लागि लेखक संग तल दिएको
ठेगानामा संपर्क गर्न धक मान्नुपर्दैन ।

पो. ब. नं० ४१८ अल हफूफ अल अहसा
३१९८२
साउदी अरब

कुनै पनि फेरबदल स्वीकार्य छ ।